# परिचय

\

लिच्छवि वंशको शासनकालमा नेपालमा वर्णाश्रम धर्मले जरो गाडे-कोले त्यस अनुरूप नै सामाजिक क्रियाकलापहरू संचालन हुन्थे । लिच्छवि-शासनकालीन समाज ४ (चार) जात २८ वर्ण व्यवस्थामा आधारित थियो र समाजमा ब्राम्हण जातको विशेष स्थान र सत्कार हुन्थ्यो । लिच्छवि राजा वृषदेवको शासनकालदेखि समाजमा बौद्ध धर्मले पनि राजकीय संरक्षकत्व प्राप्त गर्न थाल्यो । राजा वृषदेव आफै पनि बौद्ध धर्मका अनुयायी भएकोले त्यस समयमा बौद्ध धर्म नेपालमा फस्टाउन पायो । उनी पछिका लिच्छवि राजाहरूले धार्मिक क्षेत्रमा सहिष्णुताको भावनाको नीति अनुसरण गरेकोले हिन्दू धर्म र बौद्ध धर्मका विभिन्न सम्प्रदायहरू नेपालमा स्वतन्त्रतापूर्वक फस्टाउन पाए ।

वंशावलीमा उल्लेख भए अनुसार लिच्छवि शासक अंशुवर्माकी छोरी भृकुटीको विवाह तिब्बतका राजा श्रोङगचोनगम्पोसँग भएको थियो । भृकुटीको विवाहको माध्यमबाट बौद्ध धर्म नेपालबाट तिब्बतमा प्रवेश भएको हो भन्ने कुरा वंशावलीमा उल्लेख भएको पाइन्छ । लिच्छविकालमा वर्तमान ललितपुर जिल्लाको पाटनमा प्रायश: सबैजसो मानिसहरू बौद्ध धर्मका अनुयायी थिए भन्ने कुरा पाटनमा प्राप्त शिलालेखहरूबाट थाहा पाइन्छ । काठमाडौं उपत्यकाको दाँजोमा पाटनमा धेरै संख्यामा बौद्ध विहारहरू भएको वर्णन शिलालेखहरूमा छ । यसरी लिच्छविकालीन समाजमा बिस्तारै बिस्तारै बौद्ध धर्मले हिन्दूधर्मको स्थान लिएको थियो ।

यसरी बौद्ध धर्म व्यापक रूपमा प्रचार प्रसार भएकोले वर्ण व्यवस्थामा आधारित हिन्दू धर्मलाई खुला रूपमा चुनौती हुन गयो । जातीयताको संकीर्ण दायरामा राख्न हिन्दू धर्मका ठेकदारहरूले वर्ण व्यवस्थालाई आधार बनाई समाजमा छुत र अछुत भन्ने भावनालाई विषको रूपमा बहाइदिएका थिए । हिन्दू धर्मको स्वरूपलाई ध्यान दिने हो भने यस प्रकारको जातीय कट्टरता र भेद भावको भावना यस धर्ममा पाइँदैन ।

विचार र भावना सीमाभित्र बाँधेर राख्ने वस्तु होइनन् । विचार

र भावनाको प्रादुर्भाव भएपछि पखेटा भएको चरा जस्तै भई यो जतासुकै पुग्दछ । यो सीमाभित्र आबद्ध हुन सक्दैन । त्यही अनुरूप नै बौद्ध धर्मले हिन्दू धर्मको स्थान लिएको हो । हिन्दू धर्मको स्थानमा बौद्ध धर्मले जरा हालेपछि त्यस बेलाको समाजमा प्रचलन भएको सामाजिक ढाँचामा परिवर्तनको आभास हुन थाल्यो । हिन्दू धर्म त्यस समयमा ४ (चार) जात १८ वर्णमा विभाजन थियो । समाजमा कुनै जातले जातीयताको आधारबाट प्रतिष्ठा र फाइदा उठाइरहेका थिए भने कसैले त्यही सामाजिक नियमानुसार समाजमा प्रतिष्ठा र फाइदा उठाउनेहरूको दाँजोमा गुम्सिएर उनीहरूको इसारामा आफूलाई हिंडाउनु परिरहेको थियो ।

बौद्ध धर्मले नेपालमा मात्र होइन, यसको छिमेकी मित्र देश भारतवर्षमा पनि सनातन वर्णाश्रम धर्ममा आधारित हिन्दू धर्मलाई खुला रूपमा चुनौती दिएकोले र साथै बौद्ध धर्मको सरलता, जात रंगभेदमा विश्वास नगर्ने सिद्धान्त भएकोले समाजमा उच्च स्थान ओगटेका जात विशेष बाहेक अरू तल्ला जातिले यसै धर्मलाई ग्रहण गरे । यसले गर्दा धर्मको आडमा जसले फाइदा उठाएका थिए ती जातिहरूको समाजमा प्रतिष्ठा र इज्जतमा समेत धक्का पुग्न गयो । यसबाट नेपाल पनि अछुतो रहन सकेन । संयोगवश यस समयमा बौद्ध धर्ममा अनेक सम्प्रदायहरू प्रादुर्भाव भई बौद्ध धर्मको सिद्धान्तको विपरीत गरी यस धर्मलाई नै आँच आउने क्रियाकलापहरू तिनीहरूबाट हुन थाल्यो ।

भारतवर्षमा बौद्ध धर्मले ख्याति प्राप्त गर्दै अगाडि बढ्दै गयो । राजाहरू पनि बौद्ध धर्मावलम्बी भएकाले झन् यस धर्मको अभिवृद्धिमा टेवा मिल्यो । यसरी बौद्ध धर्मको प्रचार प्रसारले गर्दा सनातनी हिन्दू धर्मबाट फाइदा उठाउनेहरू-लाई ठूलो चोट र धक्का पुग्न गएकोले बौद्ध धर्मको उन्नतिदेखि कुण्ठित भएकाहरू यसको कट्टर शत्रु भए । हिन्दू धर्मले राजालाई विशेष स्थान दिएकोले पनि उसको लागि हिन्दू धर्म एउटा अमोघ अस्त्र थियो । यी सबै कुराले गर्दा समाजमा प्रतिष्ठित र ख्याति प्राप्त जातिहरूको लागि बौद्ध धर्मको सरलता र नवीनताले गर्दा ठूलो चुनौती र हाँक दियो ।

लिच्छवि वंश शासनको पतन भएपछि नेपालको इतिहासमा अन्धकारको युग शुरू भयो । राजनैतिक दृष्टिले विशाल भएको नेपाल देश स-साना सामन्त राज्यमा विभाजन भई टुक्रन गयो । राजाहरू पनि साना क्षेत्रका राजा भए । यस्तो अवस्थाले गर्दा पनि उनीहरूले सक्षम र सबल राजाको रूपमा कार्य गर्न सकेनन् । संकुचित विचारधाराले स-साना राज्यका राजाहरू कुण्ठित हुन थाले ।

बौद्ध धर्मको प्रचार प्रसारले जसको मान, मर्यादा र इज्जतमा बाधा पुऱ्याइरहेको थियो देशको राजनैतिक अवस्थाले गर्दा तिनीहरू जुरमुराउन थाले।

ठीक यसै समयमा पनि भारत वर्षमा सनातनी हिन्दू धर्मावलम्बीहरूले बौद्ध धर्म विरुद्ध आन्दोलन प्रारम्भ गरेका थिए। भारतवर्षमा जबसम्म बौद्ध धर्मले राजकीय धर्म ग्रहण गरेको थियो त्यस बेलासम्म यस धर्मका विरोधीहरूले सक्रिय रूपमा टाउको उठाउन सकेका थिएनन्। बिस्तारै बिस्तारै भारतीय राजाहरूमा सनातनी पुर्खौली धर्मले फेरि स्थान लिन लागेकोले अन्य जातीय फाइदा लिनेहरूले पनि संयुक्त भई बौद्धधर्मलाई निष्कासन गर्ने कार्यमा संलग्न भए। समाजमा जुन स्वस्थ्य वातावरण फैलिरहेको थियो अब त्यसमा शंका उपशंकाले स्थान ग्रहण गऱ्यो।

राजकीय संरक्षणमा बौद्ध धर्म फस्टाउन पाएकोले यसको अभिवृद्धि र विकास भएको हो। तर जब राजकीय संरक्षणबाट बौद्ध धर्म वंचित हुन थाल्यो तब बौद्ध धर्मको स्थायित्वमा आँच आउन थाल्यो। नेपालका लिच्छवि वंश-कालीन राजाहरू समेत बौद्ध धर्मावलम्वी भएकोले उनीहरूको शासनकालमा बौद्ध धर्म प्रचार हुन थाल्यो। राजकीय सत्तामा बस्ने राजाहरू कमजोर हुन थाले पछि बौद्ध धर्म वाहेक वर्णाश्रम धर्म मान्नेहरूले कमजोरलाई प्रकृतिले पनि रूचाउँदिनन् भने झैं राजकीय सत्ताबाट संरक्षण प्राप्त गर्न नसके पछि बौद्ध धर्मका विरोधीहरूले यस धर्म माथि कुठाराघात गर्न थाले। यस धर्मको विरुद्ध संगठित आवाजहरू निकाली समाज़बाट नै हटाउने प्रयासको फलस्वरूप जसरी भारतवर्षमा यस प्रकारको कार्य भयो त्यस प्रकारको कार्य नेपालमा पनि सुरू भयो।

भारतवर्षमा सुरू भएको बौद्ध धर्म विरुद्धको आन्दोलनले नेपाललाई अछुतो बनाई राख्न सकेन। यसको असर नेपाललाई पनि पऱ्यो। बौद्ध धर्मको अभिवृद्धि र विकासको समयमा नेपाल उपत्यकाका ठूला ठूला बौद्ध विहारहरूमा सयौं भिक्षुहरू बसी बौद्ध धर्मको अभिवृद्धि हुने आख्यानहरू हुन्थे। यी विहार-हरूबाट विदेशीहरू पनि प्रभावित भई यसका बारेमा आफ्नो मन्तव्य समेत व्यक्त गरेका थिए। बौद्ध धर्मको अभिवृद्धि भएपछि यो धर्म पनि शाखाहरूमा विभा-जन हुन थाल्यो। धर्मको आडमा यस धर्मको सिद्धान्त विपरीत गई अनेक कुरीतिहरू अपनाउन थालिएकाले धर्मको ठेक्का लिएका भनेकाहरू समाजबाट गिर्न थाले।

ठीक त्यस समयमा मल्ल वंशको अभ्युदय भएकोले सुरूका मल्ल राजा-

हरूले यस सम्बन्धमा ध्यान दिन सकेनन्। जयस्थिति मल्ल शक्तिमा आएपछि उनले नेपालमा गिर्दै गईरहेको सनातनी हिन्दू धर्मलाई पुनरुत्थान गर्ने तर्फ ध्यान दिए। उनी आउनुभन्दा अगाडि पनि सनातनी हिन्दूहरूले संगठित भई बौद्ध विहारहरूमाथि आक्रमण गरी बौद्ध भिक्षुहरूलाई धपाउने प्रयास गरेका थिए। तर राजा जयस्थिति मल्ल राजशक्तिमा आएपछि सनातनी हिन्दू धर्म पुनरुत्थानवादी आन्दोलनकारीहरूका जीवनमा रक्त संचार भए झैं भयो। उनीहरूको आन्दोलनमा स्फुर्ति आयो।

जयस्थिति मल्लले राज्य शक्तिको बलद्वारा नेपालमा लोप भएर गएको सनातनी हिन्दू धर्मलाई पुनरूत्थान गर्ने कार्य गरे। यस कार्यमा जयस्थिति मल्ललाई आफ्ना मन्त्री जयन्तको ठूलो सहयोग प्राप्त भएको थियो। यस कार्यमा जयस्थिति मल्लले पाँचजना सनातनी हिन्दू कट्टर ब्राम्हणहरू जस्तै कीर्तिनाथ उपाध्याय, मैथिल ब्राम्हण रघुनाथ झा, रामनाथ झा, दक्षिण भारतका ब्राम्हण श्रीनाथ भट्ट र मदीनाथ भट्टको एउटा समिति गठन गरी त्यस समितिको सल्लाह र राय अनुसार बौद्ध धर्मको अभिवृद्धि भए पछि लोप भएर गएको सनातनी हिन्दू धर्मलाई पुनरुत्थान गर्ने कार्य गरे।

जयस्थिति मल्लको सुधारलाई चार भागमा बाँड्नु उचित हुनेछ।

१) घर खेत सम्बन्धी सुधार
२) सामाजिक सुधार— समाजमा बसेका मानिसहरूलाई चार वर्ण छत्तीस जातमा विभाजन र जात अनुसारको पेशा र तिनीहरूलाई अपनाउनु पर्ने नियम।
३) अपराध सम्बन्धी दण्ड नियमको तर्जुमा
४) नाप तौलको व्यवस्था
५) विविध।

सुधार, परिवर्तन र क्रान्तिको कुनै निश्चित सीमाना हुँदैन। समय अनुसार गतिशील हुँदै संसारको कुना कुनामा यिनीहरू पुग्दछन्। कसैले क्रान्तिलाई रोकेर रोक्न सक्दैन। त्यस्तै जयस्थिति मल्लले गरेको सुधार पनि तत्कालीन समाजमा एउटा परिवर्तन थियो।

यी राजा जयस्थिति मल्लले बर्ष ४३ राज्य गरे यी राजाले भोग गर्दा जयत नाउं गरेका मंत्री र कीर्तिनाथ उपाध्याय मैथील रघुनाथ झा. रामनाथ झा दक्षिण श्रीनाथ भट्ट. महीनाथ भट्ट. ई पाँच ब्राम्हणहरू सर्वशास्त्रज्ञ थुला बुढीमान हुनाले तिनीहरूका निर्णयले ठह्रे बमोजिम अघी अघी लोप भई रहेका आचार आडी बिषयको र जातका विषयको समेत यथाशास्त्रोक्त लेख गरी आफ्ना राज्यका विषयमा धेरै स्थितिको बन्दवस्त गरी प्रजाहरूलाई त्यस विषयमा वर्तन गराई धर्म नीति शास्त्रानुसार धर्मोपदेश गरी राज्य शासन गरे. अब ई राजाले वाधेको स्थिति संक्षेपः—

१. प्रजाहरूले आफ्नो घर खेत बीर्ताहरू दीक धीटो राखी ऋण ग्रहण गर्न र बीक्री गर्न समेत हुने नीयेम वाध्यः ।।
२. चार वर्ण छतीस जातको नीर्णय गरी पृथ्क पृथ्क जातिको भेद छुटै इ जात अनुसार कर्म काण्डको नीयम गरे : ।।
३. यी राजादेषी अघीका राजाका पालामा अपराध गर्नेलाई हस्त प्रहार र धीक्कार बचन यति दुई सजाय मात्र गर्दथे यीनका पालादेषीकालका प्रभावले बस्तासामान्य डण्डले प्रजाहरूको रक्षा नहुने थानी सो हस्तप्रहारधीकार बचन डंण्डको प्रवृत्ति गरी रूपैया लिने डण्डको प्रवृत्ति गरी व्यवहारमा चलन गरे : ।।
४. राजा र राजसंतती परलोक हुँदा सबै प्रकारका आफ्ना प्रजाहरूलाई जम्मा गरी जातीका क्रमले मानीसहरूको दुई दुई चार चार जोडीको पंक्ति गरि नयां पलंग बनाई त्यस पलंगमा मृतक सरीर राषी स्व जातले बोकी डीप कराग गाई बाजा वजाई श्मसानमा लैजाने र घातमा लगी मृतकलाई अग्नीसंस्कार गर्ने नीयम बाँधे प्रजाहरूका मृतकका

बीखयेमा छतीस जातमा कसै कसैलाई काहार वाजावजाई स्मसानमा लगी चलाउने नीयम बाध्येः ॥ \

५. फेरी आफ्ना जातले गरी आएको कार्य छोड्ने र अर्काका जातले गरेको कार्यस्वीकार गर्नेलाई अपराधी सरह डण्ड गर्ने नीयम गर्ने गरे : ॥

६. जात चीन्हालाई साना साना जातहरूलाई पहीरन गहना घर इत्यादि यस्तो यस्तो बनाई व्यवहार गर्नू यस्तो यस्तो व्यवहार नगर्नु भनि जातै पीछे बेगल् बेगल् नीयम गरी चलनको स्थिती गरे।— जस्तो पहीरनका बीषयमाः— कसायी जातले वाहांकटे को लुगा लाउनू : पोढे जातले टोपी लबेटा जुट्टा सुनको गहना यति नलाउनू : कसायी : पोढ्रे चर्मकार : इनिले खीगटीको छाना भएको घर नबनाउनू : त्यस्ता घरमा नबस्नु फेरी आफुभन्दा थुला जातलाई साना जातले नरंम भई मान्नु भन्ने नीयमको स्थीती गरे यस्ता प्रकारले जात जातको पृथ्क पृथ्क स्थीती बाधी व्यवहारको सबै यथाशास्त्रोक्त नीयम गरी चलन चलाई देश देसमा यस कीर्ती चलाये । ई राजालाई राज गडी कुन हीसावले मीलेको हो भने ई राजा वालष छडैमा अस्वक मल्ल परलोक भए पछि यी राजाले बालषैमा राज्यगदी पायथे तैपनि ईनका पीताका भीत्रेनी पट्टीका छोराहरू ३ जनाले सषराज्य भोग गर्न नडीदा भागी पनौती सहरमा गई लुकीरहेका थीए त्यस वषत्मा वर्ष ६ सम्म ईनितीन भाई भीत्रेनी पट्टीकाले राजकाज चलाई रहेका थीए त्यस्तै बषतमा ती तीन भाई राजाले एकैकालमा ज्येठाले थुलो पोषरी बनाउनू : माहीलाले सहर बीवगारी परी उचोपरखाल वनाउनू ? कान्छाले डरवार चोकहरू वढाउनू : ई तीन थोक वनाउनाको नीश्चये गरी

प्रजाहरूलाई यस कालमा तीनै जनाले कारा आउनू भनि उर्दी गरे त्यस सहरका भला मानीसहरूले पनि यस्तो बीचार गरी सम्मत गरेको अहीले हामीहरूले पटराज्ञी पट्टीका राजा जयमल्लको आज्ञासीर उपर गर्न नपाई देबले गर्दा यीनी भीत्रेनी पट्टीका साना बुदी भएका मानीस-हरूका हुकुममा चलनु पऱ्यो अब प्रजाहरूलाई दुषडीन पनि लाग्यो एकैकालमा तिन तीरको काम भई प्रजा-हरूलाई पनि तीन बीभाग गर्नु पर्ने भयो भनी असल पट्टीका जयमल्ललाई ल्याई राज गडीमा राषनाको सम्मत-गरी सबै प्रजाहरू जम्मा भई घुराउठी हातमा सबै जनाले यक यक लथी लीई पनौती सहरमा गई राजा जयमल्ललाई पीधमा बोकी ल्याई राज गडीमा राखी फेरी राज्य भीखे गरी राजा गराये भीत्रेनी पट्टीका राजाहरू ३ भाईलाई लठीले हानी सीर फोडी मारे त्यसै वषतमा सबै जम्मा भई माहाराज हामीहरूको घरषेत सुनागरी हाम्रो षुस् गर्न डीई वक्सीयोस भनि बीन्ती गर्दा राजा जयमल्लले पनि खुसीले प्रजाहरू माथी बहुत प्रसन्न भई चलनका हकमा काटा· ढक. पाथी. करूवा यसले नाप जोखगरी कीन्ने वेचने व्यवहार गर्नु आफ्नो जातको रकम नछोडनू जात नछीपाउनू, तीमी प्रजाहरूका घर खेतका हकमा तीमी-हरूको सुनाघर, सुनाखेत, सुनावारी, भन्ने नाउ गरी घर षेत पाषाहरू तीमी प्रजाहरूलाई वक्स्यौं वेच्नू दान गर्नु, देवतालाई, चढाउनू, बन्धक, गर्नु स्मेत आफ्नो खुसगर भनि घर– षेत प्रजाहरूलाई वक्सडीय प्रजाहरूले पनि घर षेत सुनावीर्तापाई वहुत खुसी भए फेरी ई राजाले शिल्पबीड्यामा प्रबीण भएका कालीगढहरूलाई डाकी वाग्मति आर्य्यातीर्थको पारी राम लव हरि कुस

हरि भन्ने तीन मूर्ती वनाई स्थापना गरी प्रति वर्ष पुजा गरी ईष्ट देवमाने मृगस्थलीमा गोरखनाथको पाहुका मुर्ती तुल्याई सीद्ध जगाए, फेरी गोकर्णेस्वरमा नीत्यपुजाको साम-ग्रीको बन्दोबस्त गरी नीत्य पूजा गराई जीर्ण उद्धार गरे ललीत पटनमा कुंभेश्वरको देवालय दुई तला छाना गरी बनाई गजुर चढाय सो देवाल यकासनी धानका तलाउ सोहरी सफा गर्दा सोलाको नारायण मूर्ति १ गणेश मुर्ती १ सीतला मुर्ती १ बासुकीको मुर्ती १ गौरीको मुर्ती १ बसाह १ कीर्तीमुष भैरब मुर्ती १ आगम मुर्ती १ जम्मा ८ मुर्ती पोषरी भीत्र पाउदा तीनीहरूलाई स्थान स्थानमा जीर्णो द्धारपूर्वक स्थापना गरी शीतला शान्तीका नीमीत त्याहा उन्मत भैरबको मुर्ती प्रतीष्टा गरी मंत्रका प्रभावले जगाई स्थापना गरे तीनीका माथि त्यस आगम मुर्ती स्था-पना गरी नेपाली संम्बत ५१२ मा समाप्त गरे यो वोस्तार भैरब सीलामा लेषेको छदैछ फेरी ई राजाले नेपाली संम्बत ५१५ साल माघ शुल्क दसमी-रोहीनी नछेत्रका डीन वीहान १३ घडीमा गणेश पूजा कल-सस्थापन ईत्याडी पुर्वाह पुर्वकको साहनती (शान्ति ?) यज्ञको प्रारंभ गरी यज्ञ समाप्त गरी ब्राम्हणहरूलाई दान दक्षीणी भोजनहरू गराई त्यसै बषतमा ब्राम्हण आडी सबै प्रजा-हरूलाई बृत्ती गर्नालाई जात बीशेखको बेगले बेगलै बृत्तीको व्यवस्था बाधी बंन्ड बस्तगरी प्रजाहरूलाई बृत्तीमा प्रबृत्ती गराए फेरी साहुरीणीका बीषयको दीक भौग कील भन्ने नाउले व्यवहारको चलं चलाए यो राजाले लेखीएका मंत्री पण्डीहरूका सम्म तले जातमाला जातनीनेय क्षेत्रिनीर्नय नर–गृहनीनेय कार्या बली डंण्डमाला भन्ने लेखगरी ई लेखले बीसेखले स्थीती बाधनालाई नेपाली संम्बत ५३९ सालमा सो

वमोजीम श्री श्री श्री श्री श्री जयमल्ल नेपालेस्वर जय-स्थीती राजदेवमल्ल भन्ने प्रसस्ती थप प्रख्यात गरी आफ्ना नाउको सुन श्रृगीरूपैया वनाई लेखिएका आफुले बाढेका स्थीतीमा प्रजाहरूलाई प्रख्यात गरी प्रबृत्ती गराए त्यो स्थीती अबयाहा लेषीन्छ : ॥

१. **घरका बीखयेमा:–** बुढी अगुलाको चौबीस अगुलीका प्रमाणको हात १ आफ्नो हातको प्रमाण गरी वनाएको स्थीटीगल्लीका घरका प्रमाण खायक घरको चौरोतरफ नापी हात पंचानव्य ९५ गल्ली भीत्रका घरको प्रमाणखा १ घरको चारैतरफ नापी हात एक सय एक हात १०१ सहर पट्टीका घरको प्रमाण हात पचासी ८५ यस्ता हीसापले घरका बीखयमा तीन प्रकारका नापीको नीयम वाध्ये : ॥

२. **ब्राम्हणक्षत्रीय बैस्य सुद्र यतिजातलाई घर बनाउने कार्यका बीखयमा:–** वास्तु प्रकार णोक्त क्रमर अष्ट वर्गका वीचारले यथो बीधी पुर्वक शीलान्यास गरी बनाउनु :॥

३. **जातक कार्यका बीखयमा** : ब्राह्मण क्षत्रीयले व्राह्मण बाट र बैस्य सुद्रहरूले दैवज्ञबाट जाटक शास्त्रहरूको वीचार गरी डीनको यथेप्ठकालाडीर फलनीर्णय समेतको जात कपत्रिलेखाउनू : ॥

४. **खेतका बीषयमा :–** अबल्. डोयम· सीम· चाहार. चार प्रकारको व्यवस्थाबाधी संख्याको स्थीती गरे जस्तो :– अबलषेतमा चारैतरफ नापी प्रमाण यकसय नउ हातको कर्ष सीम खेतमा चारै तरफ नापी प्रमाण यकसय बाह्र ११२ हात कर्ख १ चाहार षेतमा चारै तरफ नापी यकसय पचीस १२५ को कर्ख १ गराए बुधी अगुलाका चौवीस अगुलीको यक हातका प्रमाणले साढे सातहात ७॥ हातको प्रमाण

भएको टागो नाउ गरेको खेत नापनेमान डण्ड वनाए अघी खेत आडी नापी कार्यका बीखएमा सान्हे दस १०।। हातका प्रमाणको मान डण्ड थीयो यी राजाका पाला त्यो मैती आफ्ना हातको प्रमाण गरी ७।। हातको मान डण्डलाई नापी गर्नालाई डंगुल भन्ने नाउ भएको क्षत्रकारक जात प्रसीध गरी व्यवहार गरे घर नापी गर्ने कार्यका बीखयमा तक्षकार बाडाहरू मध्ये पीछु भन्ने नाउ भएको गृहकारक जात प्रसीध गरे :।।

नेवारलाई छतिस जातको भेद गरी श्रेष्ट भन्ने नाउ भएको नेवार जात प्रसीद गरे यरतै अरूहरूको जातको पनि पृथ्क पृथ्क भेड गरे जस्तो जैसीको जात ८ आचारको जात ८ बैंडयको जात-चार इत्याडी : ।।

श्रेष्टका ३६ जात मध्ये तागाधारी जात १३ चंन्देरी, सुबेडी, भडारी, आचार, दैवज्ञ यी आडी ब्राह्मणको जात : पंन्चगौड पंन्चद्राबी द्यति १० मुल जात हुन ईनैबाट ब्राह्मणको जातको नाउ धेरैं हुन गयो जैसी ब्राह्मणलाई अपुज्य गरे : ।।

ज्यापुको जात बत्तीस ३२ कुमालको जात आठ ८ षसको जात चौसाथी ६४ कसाहीलै नङ्कातने जात वहतर ७२ वाडाको जात ४ कुसलेको जात ४ पोडेको जात ४ चर्मकार कुलुको यती सब जात जम्मा गरी सातसय पचीस ७२५ पचीस जात थहरे : ।।

यस्तो जातको व्यबस्थावाधी साना जातका हातबात अधी-कार नभएको उतम कार्यहरू गराउनाले कुलको नासर आयुदीनास हुन छन् गराउनू भन्ने सबै जातमा नीयम वाध्ये : ।।

फैरी थुला जातका स्त्रीले आफु भन्दा साना जातका पुरूष जातसंग र सानाजातका पुरूषले आफुभन्दा थुला जातका स्त्रीसंग र बिक्री डान गर्नु गरे जात बीसेषको व्यवस्थाले जाति भ्रष्टर अरी ङ्ड प्रायश्चीत समेतको भागी हुन्छ भन्ने पनि सबै जातका नीयम

वाग्य : ।।

फेरी आफ्नो जातको परापुर्व देखीन् गरी आएको काम नगर्ने-लाई डण्ड गर्ने बिखयेमाः– ब्राम्हणले आफ्नो पुजा पाठर : यज्ञमानी काम गर्नु : काम गर्न वीराय ब्राम्हणलाई तुरू हजार १००० डण्ड गर्नु त्यस्तै आचारले काम वीराए आचारलाई पाचशय ५०० त्यस्तै गुमाललाई ५०० ज्यापुलाई २५ सुढीनीलाई २५ पीछीनीलाई १२ नाउलाई १२ भाटलाई १२ कहारलाई १२ कुहमाललाई १२ चीत्रकारीलाई १२ कसायीलाई १२ पोढेलाई १२ पोढेलाई १२ डण्ड गर्नु यजमानले बीराय तुरू १००० हजार यजमानलाई डण्ड गर्नु राजाले पनि सबै जातको कुलचार कार्यहरूको परापुर्वमा चले वमो-जीम गरी थीति बाधी बरावर प्रबृत्ती गराउनु भन्ने स्थीती गरे : ।।

अब जात जातले गर्ने र गर्न नहुने वृत्तीका बीषयको व्यव-स्था :– ब्राम्हणको यजमानी : क्षत्रीयको राज्यकाजको स्थीती : श्रुद्धमारको बेपार यती अरूले गर्न हुँदैन उसै उसै जातले गर्नु भन्ने १ त्यस्तैं चीत्रकारले चीत्रकार काम गर्नु : सालमीले तेल पेलनु : छीपाले कपरा गराउनू : भाट जातले नबुर गाउनू : गठरमाली जातले फुल वेचनु : खुसलले डोली बोकनू : योगी भेखधारीले मागी खानु : लोहकमीले ढुंगाको काम गर्नु : नकर्मीले फलामको काम गर्नु : सीकर्मीले काठको काम गर्नु : जोतीखीले जोतीस बीख-येको काम गर्नु : कुमालले माटाको भाडा बनाउनु : टती जातले कात्रो बुन्नुः कसायीले रांगो मार्नु मासु बेचनू : नाउले कपाल खौरनु नङ कातनु : भड़ेलले पाक गर्नु : कसतले कासाको काम गर्नु : तमोटले तामाको काम गर्नु : वाडाहरूले सुन चाडीको काम गर्नु : बौद्धा चार्य गुमालले चीत्रकारी: साल्मो : छीपा, भाट : गठ : लाहकमी कुमाल : नाउ : वाडा : यीनै जातको यजमानी गर्नु : ।।

अबपन्च प्रजाहरूलाई वाधेको स्थीती :– सीपाहीलाई ढाल तरवार : खाली प्रजालाई डोको बोकी सबैले आफ्ना

कर्ममा रहनु ब्राम्हणलाई सीपाहीले पाव लागी गर्नु : कल्लयाण स्वस्ती दीर्घायु यस्तो ब्राम्हणले आसीरवाद डीनु : ।।

सीपाही र नेवारले परस्पर राम राम गर्नु : ।।

अव चारै वर्ण छतीस जातलाई बाधेका स्थीती :- पहिले मानीस जन्मदा सुठीनीलाई दीने डस्तुर : च्यूरा कुरूवा १० चाबल कुरूवा १० जन्मै देखीनुवारान सम्म बालषलाई डीएको वस्तु त्यस सुठीनीले पाउछे डाकदा नआउने सुढीनीलाई तुरू १२ साबीक सुढीनीलाई नडाकी अरू सुढीनीलाई डाकने र आउने सुढीनीलाई पनि तुरू २४।२४ डण्ड गर्नु जन्म भएको डीन अजीमाहरूलाई सीन्दुर सुपारीको पोका चढाउनु फेरी सुपारीहरू नातादार इष्टमीत्र-हरूलाई पनि डीनु देवताहरूलाई सीन्दुरको पोका र दक्षीणा चढाउंनु गुरू प्रोहीतलाई पनि दीनु खीचुपालु पनि चहाउनु डीन डीन बीचार गरी वधिया डीनमा पीछीनीलाई डाकी नालकटाउनु जुबानू चाकु ई बस्तु येकै थाउमा मीसाएको सुत्केरी हेर्न आएका ईष्टमित्रहरू सबैलाई बाड्ने वालग्रह सान्त गर्ने विखयेको डान गर्ने पडार्थ फेरी सीचु पालु बाडनू क्काठर ईसीमुग चढाउनू खुवाउनू सेतो भोत पहेलो रूमाल मीमीरा अगुठी यक कुरूवा चावल पदार्थ र वुकुबा तेललाई डीनू प्रोहीतले सोझो काम गर्नु यजमानले डक्षीणा भेटी २४ डामुडीनू यसमा साबीक प्रोहीतलाई नडाकी अर्को प्रोहीतलाई डाकने यज-मानलाई र आई काम गर्ने प्रोहीतलाई तुरू ५।५ डंण्ड गर्नु हर्षबाडा यी जो सकेको र सीचु पालु समेत गाउने बजाउनेलाई डीई पथाउनु फुफुले त्याहा आउने नाताडारहरू र पुत्र परीयारहरू सबैलाई खुवाउनु काम सीद्धिय पछि फुफुलाई चोलाहरू डीई बीडा गरी पथाउनु प्रोहीतलाई सीद्धा पथाउनु दसौ डीनमा नाउलाई डाकी नङकेस बनाउनु काममा लागेको नाउ नाउनीलाई पेट भरी षूवाउनु **त्योनाउने** (आफ्नु २) आफु पाउने वार्ष डोनको ठेकबाली अडकेबालीलाई मात्र काम गर्नु त्यसकारणले यजमानले पनि नाउ नाउनीलाई डीनु

गर्ने ठक वाली नग्रडकाई अगाडी नै डीनु डाकडा आएन भने त्यस नाउलाई तुरू १२ डण्ड गर्नु यजमानले साबीक नाउ छोडी अर्को नाउ डाकी काम लगाए भने काम लाउने गर्ने दुबैलाई तुरू १२।१२ डण्ड गर्नु हरबखत बर्खडीन सम्म काम गर्णे नाउलाई डीउसो खाना खाजा च्यूरा डीनु : ॥

देव पातनमा वस्येका लुगा धुने सधट भन्ने जातलाई लुगा धुन डीडा यक पाथी च्यूरा चौधडाम डास्तुर डीनु डाकन जाडा नआउने सघटलाई तुरू ३ डंण्ड गर्नु साबीक सघटलाई छाडी अरू लाई डाकी काम लगाए सो गर्णे गराउनेलाई तुरू ३।३ डंण्ड गर्नु :॥

मृतक भोत्र मा ज्योतीसीलाई डाकी वधिया डीन हेरी चीन्हा चीटा गर्नु जोतीसीलाई बान्ह दाम दस्तुर दीनु ब्राम्हण रजपुतको १२ दिनमा नाम कर्ण गर्नु अरू जातको १० दिनमा गर्नु अरू जातमा १० दिनमा गर्नु प्रोहोतले कलसपुजा गरी नाम थहराई पन्चसुगंन्ध पदार्थले जन्म पत्रीका नाउलेषी नाम बाची बालषलाई सुनाउनु सो गर्दा सुढीनीले बाल-षलाई स्नानगराउनु घृत प्राशण गराउनु फेरी मीमीरा अगुथी मोटो बुकुवातेल लगाई डीई त्यसलाई डस्तुर च्यूरा कुरूवा ५ चावल कुरूवा५ डाकनजादा नआउने पीधीनीलाई तुरू १२ डण्ड गर्नु वालखजन्म भए को चौथा डिनमा गर्ने :— : अजीमा लाई सीचू पालु चढाउनु. सीचु पालु भनेको सुत्केरी हुँदानून अदुवाको तुक्रा रूमाल डीनु कलस पुजा-हरूमा र अजीमाको काम गर्दामा सीचु पालु चढाउनु त्यस त्यस काममा लाग्ने मानीसहरूलाई पनि सीचु पालु वाडनु माईतवाट ल्यायको तीकाकोसराजामसोपनु माइतवाट आउने मानीसलाई पेट भरी खुवाई दाम दीई बीदा गर्नु फेरी वाटोमा अजीमालाई डीने पदार्थहरू लगी फालनु यति भएपछि त्यस डीन डेषी बालषलाई महगा घोटी औषद षुवाउनु : ॥

तेश्रो महीना लागेपछी बधीया डीनमा कलसार्चनगरी शुभलग्न मुहुर्तमा कुलका मान्ये स्त्री वा पुरूषले नरीवलकपुर

गुलीयो फल उषु कोरसहरू षुवाउनु अनि सुढीनीले वली फालनु यजमानले ब्राम्हणलाई सिन्धा दक्षीणा डीई बीडा गर्नु फेरी माईत वाट आउनेलाई खुबाई २।२ दाम दस्तुर डीई वीडा गर्नु त्यस वखत देषीन बालषलाई फल सातु चल्यो : ॥

छमहिना लागेपछि वढीया डीन मुहुर्तमा ब्राम्हणले कलस पुजा गराई चौरासी जातको पाकीतयार भएको व्यन्जन पदार्थ र सालीधानको यककुरूवा बावलको मातई त्याडीखाने पदार्थहरू थुलो थालमा त्रीषुडीसमेत राखी पस्कीपहीलेतेहो हीसाबको व्यन्जन भाट दही आडी षाने पदार्थहरू अजीमालाई परसारी असल बेलामा कुल कामान्ये पुरूष वास्त्रिले पंचग्रास खुवाई थुलोगास गरी तीनगास खूबाउनु देवदेवतालाई ६ भाग भेटी र ब्राम्हणलाई सीधाडक्षीणा-डीई वीडा गर्नु त्यस डीन देषी बालषलाई अन्न चल्यो : ॥

अवचुदाकर्म : अघील्लाडीन कुलकामान्ने पुरूषले नंङ कपाल बनाई खलीले नुहाई शुद्ध हुनु भोली पलट्टातोनले गणेश पुजानान्दी श्राद्ध पीठ पुजाहरू पुर्वान्हि र गुरूनाथको पुजासमेत आ-चार्य काहात बातगराई त्यहापछि वटु (बालक)का सीरदेखी पाद सम्म सुत्रले नापी यकसये आठ आवृत्ती गरी कूमारीका हातले बेन्ही बनायेका अग्रिवा सन सुत्र र सुगन्ध द्रव्यस्वस्ती चीन्हीत पदार्थहरू र अग्नी संस्कृतलोहको क्षुर रक्ष्यांश कुतफल समेत जम्म गरी अभीसेक दिई नवरत्न मुद्रीकाले वटूकामध्ये केसमा वाधनु देवतालाई भेटी चढाउनु कुमारीको पुजागरी ब्राम्हणजोखी आचार्यहरूलाई पुजागरी सीधादक्षीणा डीनु त्यहापछि त्रीगुडीसहीतको थुला थालमा सालीधानकायक कुरूवा चावलको भात जम्मै पस्की चौरासी व्यन्जन समेत राखी त्यस बटुलाई, पंचग्रास पुर्वक भोजन गराउनु त्यहा-पछि उच्छीस्तकलुख फालनु भोली पलत प्रातकालमा यज्ञमण्डलमा सामग्री तयार गरी गणेश कलस आडी पुर्वान्निकर्म सीध्याई ब्रम्हाच न-गरी होम गर्नु सुलग्गमहुर्त बखतमा तुलक्षुर सूवर्णसुची चन्द्र मंण्डल थली-

गागा गणि पुजा गरी सर्वोषध युक्त शुद्ध जलले वालकको कपाल भिजाई कगमा पञ्चपल्लववाधी मावलीका हातलै पहीले पूर्वतीरको केस-... पछी दक्षीणतरको यस्तै कूमले वालकको केसछेडन गर्नु फुफुले चन्द्र मण्डल थलीयामा थापनु कानमा मामाले सुवर्ण सुचीले सुगन्दले चन्दनले चीन्ह लगाई डीनु उहापछि संपुर्ण केस नाउ वाटखौराउनु कानछेडनु सी-धाए पछि स्नानगराई कपालमा खण्डले सेतोतीलक लगाई दीई स्वस्ती-...। शकुन आसीरवाडहरू गाई पढी बस्त्र पहीराउनु थाडो चन्डन लगा-उनु देवताहरूलाई भेटी ब्राम्हणलाई सीधादक्षीणा डीई यज्ञ वीसर्जन अभीसेप गरी सुर्य गणेश आडी देवहरूको दरसन गराउनु फेरी मामाका घरबाट ल्याएको टीका लगाई डीनु टीकहरू ल्याउनेलाई खुवाई २।२ ...म डस्तुर डीनु फुफुलाई चोलोएकर चन्द्र मंण्डलको थाली दीनु नाउ-लाई चार दीनक्षोरकार्यमा लगाएको बस्त्र खाने कुराको भाग बाह्र दाम दस्तुर समेत बीनु वीडा गर्नु यसमा ई काममा लाग्ने सावीक मानीस छोडी अरूलाई डाकी काम गराउने यजमानलाई र गर्नेलाई पनि तुरू २४।२४ डण्ड गर्नु दाकदा नआउने ईनिहरूलाई प्रोहीतलाई तुरू १२ जैसी अचारलाई तुरू ६ फुफुलाई तुरू ८ मामालाई तुरू ८ चीत्रकारीलाई तुरू २ कुमाललाई तुरू १८ नाउलाई तुरू ३६ यस्दरले डण्ड गर्नु यो व्राम्हण क्षेत्रियको चुडाकर्मको व्यवस्था हो अरू जातकाहरूमा कलस पुजामात्र गरी क्षोर गर्नु डण्डका हकमा माथी लेखीय। बमोजिम गर्नु : ।।

अब ब्रतवन्ध :— ब्रत वन्धका पूर्ब डीनमा अधीवास र गणेश वरूण कलस स्थापन नांन्दी श्राद्ध पुजाहरू चुदा कर्ममा गरे बमोजिम गीद्धा गरी गुरूले होम गरी सुभमूहुर्त,बेलामा यथाक्रमले गुरू मण्डल ईन्द्रादी देवहरूको पुजागरी डण्डादी ग्रहण भूखणधारणा पुर्वक मौजी-वन्द गरी अन्त्यमा गोडानहरू गर्नु आरम्भ काल ब्राह्मणको माघादी : आषाडादी : भद्रसुल्क ईनमा आरम्भ गर्नु वढीया हुन्छ क्षत्रीयको ...न सायतमा आरम्भ गर्नु वढीया हुन्छ मौजी वन्धनमा अष्टमडी-नागागमावर्तन कार्य गर्नु त्यहा पछि कुलदेबता पुजागरी अभीसेक

भोजनहरू गर्नु यो ब्राह्मण क्षेत्रीयको हो अरू जातलाई कलस पुजा-मात्र गरी ब्रतबन्ध गर्नु अरू गर्नु पर्दैन एती कर्म भए पछि त्यहा देखि स्व जातको धर्म मर्ज्यादामा रहनु :।।

खुसल देखि उपल्लाजातले खुसल देषी कुलुसम्मका जातका हातको पानी नषानु कडाचीत थुलीखाए चान्द्रायण गरी पंचगर्बेषाइ ब्राह्मणलाई सीधा डक्षीणा डीई गोदानगरी रात्रीमा तारादरसन गरी भोजन गर्नु शुद्ध हुन्छ अकलापर्दा जानी जानी खायो भने प्राजा-प्रत्य जान्दायण गरी गोडान गरी ब्राह्मणलाई सीधा दक्षीणा दान दीई सर्कारमा तुरू १२० दण्ड तीरी पन्च गव्य गंगाजलषाई आफ्नो जातलाई तुरू १२।१२ दीई तीनीलाई भोजन गराई रात्रीमा ताराको दरखन गरी जातसंग भात मीलाउनु :।।

बाबु ब्राह्मण आमाबीधवा रजपुत्रीबाट जन्मेका जैसीलाई जनैदीई सीखा गायत्री डीनु ती जैसी ब्राह्मणले संकलप पढ्नु श्रेष्ट जातसंग बीबाह कार्य गर्नु जोतीस शास्त्र पढ्नु पात्रो बनाउनु ग्रहण योगस्नानादीयोगहरू कहनु चीन्हा लेखनु यतिकार्य गर्नु हुन्छ ई वाहेक अरू ब्राह्मणले गर्ने कार्य हुन्डैन कदाचीत यस्थीतीको मर्ज्यादानाघी जैसी जातले अरू ब्रहम कर्ममा प्रवृत्त भए त्यस जैसीलाई तुरू १२ डण्ड गर्नु :।।

वाबु ब्राह्मण आमा स्ववर्ग क्षेत्रीणी जात जन्म हुने कर्माचार्य भन्ने जातले शीखा गायत्री पाइ तुजजादेबीको टहल गर्नु कधयित केही कारणले देवीको कामहरू अडकाउ हुने भए पनि पूजा नअडका-उनु अरूले छुन नहुने टी देवतालाई बोकी राज हुने थाउ षडमा ल्याउनु ती कर्माचार्यले आफ्ना पुरूषामा नचलेको बलमीची जणै ल्याए जनै छीनाली डीई त्यस कर्माचार्य लाई आगामा लाल गरी पोलेका फलामका तारको जनै लगाई डीनु यस देषी अरू कुरामा माथीकै सदर थान्नु :।।

जैसी जातले आफुले गर्न हुने कर्महरू बाहेक वल मीचायी

गर्ना उपल्ला जातले गर्ने कर्म गरे त्यस जैसीको जनै छीनाई श्रेष्ट गागगा मीलाई डीई तुरू २४ डण्ड गर्नु :।।

ब्राह्मणले षुसलनीलाई स्वास्नी तुल्याए भने तुरू १२० डण्ड गर्नु प्राजाप्रात्य चान्द्रायण गरी आफ्ना जात वर्ग (?) लीई तुरू २४।२४ दस्तुर डीई भोजन गराइ पंच गव्य गंगा जल शाली ग्राम जल तुलसी जलषाई रात्रीमा ताराको दर्सन गरो भोजन गर्नु सुद्ध हुन्छ :।।

तपीनी, मुसलनी, शाल्मीनी, चीत्रकारीनी, भटीनी, पुला-पुलीनी, यीनीहरू स्त्री जातलाई ब्राह्मणले स्वास्नी तुल्याएका हकमा षुसलनी संग वीग्रदा हुने बमोजिम कार्य गरी सुद्ध हुन्छ :।।

नाउनी, सद्धरनी संग ब्राह्मण बीग्रे तुरू १४० डण्ड गर्नु अरू माथी लेषीये बमोजिम गरे सुद्ध हुन्छ :।।

लोहकर्नी, कौनी, माहुतीनी, छीपीनी, मातीनी, कलीनी, नगाहीनी, गठीनी, संखुनी, छत्रकार्नी, सवलनी, सुढीनी, कुसलीनी, वलामीनी, माळीनी, यती स्त्री जातलाई ब्राह्मणले स्वास्नी तुल्याए तुरू ४८० दण्ड गर्नु चामुन्द्रायणका हकमा माथी लेखिएको डोबर गरी अरू कमै लेषीए बमोजिम गर्नु शुद्ध हुन्छ :।।

पोडेनी, कुलुनी, च्यामेनी, इनलाई देखी उपलला जातका पुरुषले स्वास्नी तुल्याए भने उही जात हुन्छ प्रायश्चित छैन नजानि भूल परि बिग्रे तुरू २४० डण्ड गर्नु तिन प्राजाप्रत्य चान्दायण गरी अरू कर्म माथी लेषीय बमोजिम गर्नु सुद्ध हुन्छ :।।

यी सबै जातमा लोकने भएका स्वास्नी संग बीग्रे सुन श्रृगी मोहर रूपैया ६० डण्ड गर्नु अरू माथी लेषीएकै सदर गर्नु :।।

लासा जानेका सुबासनीसंग वीग्रे लेखीयाका डण्डको दोबर डण्ड गर्नु यी माथी लेषीयाका कसुरहरू क्षत्रिय जातले गरे त्यसको आधा दण्ड गर्नु प्रायश्चित पनि आधा गर्नु अरू कुरा ब्राह्मणलाई सरह बमोजिम गर्नु बैस्य जात वीग्रे भने डण्डका हकमा क्षत्रीयलाई

हुने बमोजिम गर्नु प्रायश्चित आधा गर्नु अरू लेषीयकै सदर सुद्र जात बीग्रे भने छेत्रीयलाई हुने डण्डको आधा डण्ड गर्नु चान्द्रायण माथीकै सदर : ॥

प्रायश्चित गर्नु नपर्ने लोकने हुने स्वजातका स्वास्नी संग वीग्रे सुन श्रृगी रू ६० डण्ड गर्नु : ॥

असल जातका स्वास्नी संग उ भन्दा कम जातका पुरुष बीग्रे भने जातको पक्ति बढाई स्वास्नीको गर्भ रहेको छैन भने भूलपरि बिग्रेको भए चौथा डण्ड गर्नु चान्द्रायण प्राजापत्यहरूका हकमा माथीकै सडर गर्नु जानी जानी बिग्रेको भए डण्ड चान्द्रायणका हकमा लेषी-यकाको डोबर बढाई गर्नु अरू माथि लेखिएकै सदर गर्नु ।

लोकने हुने ब्राह्मणी संग ब्राह्मण बिग्रे सुन श्रृगी रूपैयां ३० डण्ड गर्नु ती ब्राह्मणी आफ्ना जात भातबाट भ्रष्ट हुन्छीन लोकने भएका ब्राम्हणी संग क्षेत्रीये बीग्रे लीङ काटी सुन श्रृगी रू ३० डण्ड गरि फेरी खोला पार लगी त्यस क्षत्रीलाई चान्द्रलका हातबाट यक चोतमा मर्ने गरी हानी मार्नु वीधवा ब्राम्हणी संग क्षत्रीय बीग्रेका हकमा लीङ मात्र काटी सुन श्रृगी ३० दण्ड गर्नु त्यस ब्राम्हणी संग बीग्रने क्षत्रियले आफ्ना जातमा जात भातमा जानु परे प्राजापत्य चान्द्रायण गर्नु अनि अपराधवाट सुद्ध हुन्छ : ॥

लोकने भएका ब्राम्हणी संग बैस्य जात बीग्रे भने लीङ काति दिनु सुन श्रृगी १२० दण्ड गर्नु दुबै लोकने स्वास्नीलाई चान्द्रायणहरू छैन अपराधी थहछर्न वीधवा ब्राम्हणी संग बैस्य बिग्रे लिङ काटी सुन श्रृगी रूपैया ६० दण्ढ गर्नु ब्राम्हणी चान्द्रायण छैन अपराधी हुनेछ बैस्यका हकमा त्यस्ता बैस्यले आफ्ना जात भातमा चलनु परे १० प्राजाप्रत्य चान्द्रायण गर्नु अनी सुद्ध हुन्छ : ॥

लोकने हुने ब्राम्हणी संग सुद्र बीग्रे लिङ काटी खुवाई चण्डा-लको हातले तेसलाई कटाउनु ब्राम्हणीलाई चान्द्रायण छैन लोकनेको जातमा मील्छ : ॥

अब जात जातले गर्ने जात जातको बीसेख बीशेख कार्यको व्यवस्था सानु थुलो जात छुतीने गरो तल्ला जात देखि क्रमै लेखिन्छ :॥

कुलु जातले गर्ने कामको व्यवस्था:- आफ्ना जातका हात थान कपाल खोरनु नङ कातनु फेरी बृधी सुतक मृती सुतकहरूको कर्म पनि आफु आफुले गर्नु आसौच १० दिन बार्नु फेरी पैतालिस डिन पीछ कर्म सपीण्ड कर्महरू पानी आफ्ना जातका नाइके का वचनले आफ्ना जातका जान्ने मानीसका मुषबाट वाक्य पढी गराउनु छालाका कुवा गाग्रो थैला थैली आडी गरेका मालाहरू बनाउनु फेरी बाजा गाजाका गोलामा छाला लगाउनु आफ्नो जातले गर्ने छालाको काम छोडी अरू जातका इलम गरे त्यस कुलुलाई तुरू १२० दण्ड गर्नु यस जातले आफ्ना जातमा बिहा गर्न पाएन भने आफ्नो जात भन्दा तल्लाई स्वास्नीलाई राजी गराई श्रेष्ट देषी कुसलेनी सम्मका स्वास्नी ल्याउनु वात लाग्दैन ।

अब पोडे जातले गर्ने कामको व्यवस्था:- आफ्ना जातका हात वातै कपास खौरनु न कातनु, आफु आफुले बचन पढी सुतक पीण्डहरू गर्नु जाट पोसाक जोडी नलाउनु सुनको गहना नलाउनु बीना कामले सूर्य नारायण अष्ट भए पछि सहर भीत्र नपसनु पीठदेवताका समीपमा वसी डेबताका गहनाको संभार गरी नैबेड मागी षानु माछा मारा भगेरा समातो बेची षानु आफु भन्दा थुला जातलाई नछुनु गाई नखानु सूगुर षानु मुर्दाका लुगाहरू बटोली लिनु श्मशानको दस्तुर एक दाम लीनु पोडेनीले सती जाने स्वास्नी संग धुप प्रेम पूर्वक मागी जोर पोसाक लिनु सती जाने स्वास्नीले लोग्ने संग नमरी चीता बात झरी जान्न भनी भने त्यस स्त्रीले पोडीनी संग मीली सोही जात भइ वस्नु :॥

डुम जातको व्यवस्था :॥ कुसले जात संग भई ढोलक बजाउनु स्वास्नी नचाई कमाई गरी खानु सुतक मृत्तीक कर्मै स्त्रै पण्डित कर्महरू आफैले गर्नु :॥

टटी जातको व्यवस्था :–: यो जातले प्रजाहरू मरे पछि श्मशानमा लैजाने बखतमा चाहिने कात्रो बुनी टका एक मोल लिई बिक्री गर्नु सतिका कात्रोको मोल भने दुई तका लिनु सुतक ६ दीन जुथो १० दिन बार्नु पुरोहित गुबाल गर्नु : ॥

कुसले जातको व्यवस्था :–: यस जातले सबै प्रजाहरूका मंगल कार्य गर्दामा बाजा बजाउनु दस्तुरका हकमा सामान्य कार्य गर्दामा भए बाह्र दाम लिनु बिवाह कार्यमा भए जनही रू. ॥. दस्तुर लिनु पास्नी ब्रत वन्ध चुदाकर्महरूमा भए दस्तुर जनही दाम ६।६ को हीसापले लीनू ।

कुलुकुलु जातका व्यवस्था :–: दुनियाहरूका मृतकलाई श्मशान घाटमा लैजादा अघि अघि लागी मजुरा आरती वजाई आफ्नो डस्तुर चार दाम र यक कुरुवा चावल लीनु–कसाईबाट कपाल नङ वणाउनु सुतक जुथो गैपछीक पुरोहित माथि लेखीये बमोजिम गर्नु : ॥

मंगल कार्य गर्नेले इनहरूलाई पेटभरी षुवाउनु यस जातले दाकदा नआई काम अडकाए तुरू १२ डण्ड गर्नु आफ्नो साविकको कुसले लाई छोडी अरूलाई डाकि काम लगाउनेलाई तुरू १२ डण्ड गर्नु फेरी टोल टोलमा दुनियाको चोकहरू वढारी खानु फेरी कपालीक भेष भई दबरू बजाई मागी खानु सुतक ६ मृतुक ७ दिन बार्नु मृतक गाडनू पूरोहित आफ्नो जातको हुनु मरे मात्रै पछीक कार्य गर्नु खेत बारी कमाउनू : ॥

कसाही जातको व्यवस्था:– आफ्ना जातका हातले नङ केस बनाउनु दुनियाको सबलाई श्मशानघाटमा लैजादा सतिको बाजा बजाएकोमा एक एक टका र अरूमा भया तीन तिन दाम दस्तुर लीइ वाजा वजाउनु दुनिया का काममा रागा काटदा यक दाम वा एक पैसा दस्तुर लिई रागा कातनु भित्र तीका बाल रागा न काटी बाहीर रागा न काटनु भला मानिसलाई त्यो मासु नबेचनु चौरमा प्रजाहरूको रागो

...न पर्ने राज दस्तुर एक पैली मात्र रागो काटनु मासुको बेपार गर्दा राज दस्तुर डोवर डीनु डुनियाले बडेल काटनु पऱ्यो भने सर्का- रमा टाउको चढाई आफ्नो दस्तुर आथ पैसा लिई मासु छुत्याई डीनु आफू भन्दा थुला जातलाई दही दुद नबेच्नु, घ्यू पनि नदिनु, सुतक ६ दीन जुथो वार्नु त्त्रं पछी उकर्महरू माथी लेखिएकै सहर खेती गर्नु पुरोहित गुबाल गर्नु : ।।

नरी जातको व्यवस्था :–: भीतामा चीत्रकार लेषनु फेरी फर- मायगी चीत्र पनि लेखनु, कसाई बाट नङ कटाउनु च्यूरा कुटने मुगल नसमाटनु सुतक ६ दीन जुथो डस डीन बार्नु त्रै पछिक कर्म गर्नु पुरोहित गुबाल गर्नु : ।।

माली जातको व्यवस्था : ।। : फुल बेची साटी षानु, सुतक जुथो पुरोहितहरू नरी जातका बमोजिम गर्नु : ।।

छीपाको व्यवस्था : ।। : नीर आडी रङले धाकां कपडाहरू रंगाउनु कसाही बाट कपाल खौराउनु, नङ कटाउनु सुतक जुथो त्रै पछीक उप्रेतहरू नरी जातका बमोजिम गर्नु : ।।

नकर्मी जातको व्यवस्था :–: फलामको काम गर्नु सुतक ६ दीन बार्नु नापीत कसाइ गर्नु, जुथो त्रैपछीक पुरोहित माथीकै रादर गर्नु : ।।

पीछीनीको व्यवस्था :–: दुनियाको बालख जन्मदा बढीया दीनमा नाल फालि डोबातमा लगी गाडनु सुधीनीले पाउने दस्तुरको आढा दस्तुर लीनु सुतक ६ दीन जुथो १० दिन बार्नु पुरोहित गुभाल गर्नु त्रैपछीक गर्नु नाउ कसायी गर्नु षेत कमाउनु : ।।

सघत जातको व्यवस्था :–: दुनियाहरूको लुगा धोई वर्ष वर्ष डीनको कबुल बमोजिम वाली वा महीनावारी खानू सुतक जुथो पर्नमा त्यो परेका बीष्टावाट ६।६ कुरूवा च्यूरा १६।१६ दाम दस्तुर भाग लिई खानु खेत कमाउनु जुथो सुतक प्रोहीतहरू माथी कै सदर :।।

नाउको व्यवस्था :–: ब्राह्मण देषी ज्यापू पर्यन्तका जातको

कपाल खौरनु नङ काटनु सुतक जुथो परेमा ६।६ कुरुवा च्यूरा दस्तुर लीनु, अरू कार्यमा बीष्टले जोडीएको भाग लिनु, फेरी माहुर लाउनु ऐना देषाउनु चूडा कर्म ब्रतवन्धहरूमा भने १२।१२ दाम दस्तुर लिई भोज षानु, फेरी खेत कमाउनू, सुतक जुथो १० दीन बार्नु त्रै पछीक लत्याकर्म पनि गर्नु पुरोहीत माथी कै सदर :॥

कोनालको व्यवस्था :–: नेपाले धुप वनाई काथ कुंडी बेची खानु अरू कार्य माथी कै सदर :॥

माहा ब्राह्मण (भात) जातको व्यवस्था :–: पाखी पतुकाहरू रगाउनु, मृतक परेमा यकादसाहका दीन दिएको भोजन गर्नु फ्रेरी खेत कमाउनु पसल नराषनु जुथो सुतकहरू माथी कै सदर :॥

चीत्रकारीको व्यवस्था :–: देबताको चीत्र लेख्नु गुबालसंग दीक्षा ग्रहण गर्नु, रक्सी जाडहरू बेचनु, षेत नकमाउनु नाउ कसायीं गर्नु, जुथो सुतकहरू माथी लेषीकै सडर :॥

साल्मीको व्यवस्था :–: तेल पेली बेचनू, बाबीयाले षत बाधनू, अरू कर्म माथी कै सडर :॥

मुसल जातको व्यवस्था :–: कसायींले मासु बेचने ठाउमा मासु पोका पारी डोई दिएको आफ्नो डस्तुर लीई खानू, सुतक जुथो माथी कै सदर :॥

टेपोट जातको व्यवस्था :–: पालुगाको साग रोपी व्यवस्था सीत बेचनु, बेचदा श्री ५ सरकारमा दस्तुर डीनू, काहार बाजा बजाउनु, खेटी गर्नु, सुतक गैह्र माथी कै सडर :॥

खुसल जातको व्यवस्था :–: काहार वाजा बजाउनू, षत बाधदा साल्मी जातले नपुगे गुहार गर्नु षेती गर्नु, सुतक गैह्र माथी कै सडर :॥

सीकर्मीको व्यवस्था काथको काम गर्नु, सुतक ६ दीन जूथो १० दिन बार्नु त्रैपछीक गर्नु पुरोहित समेत माथी कै सडर :॥

ग्वाल हेलको व्यवस्था :–: गाई पालनू, दुद दही घीउहरू

नेपाल श्री ५ सरकारलाई अरू प्रजाहरूलाई कार्य गर्दा चाहीयेका गाई-... तयार गरी मोल लीई दीनू सुतक १० दीन जुथो १२ डीन बार्नु त्रैपाछीक पुरोहित ब्राह्मणहरूका हकमा माथी कै सडर :॥

कहमाल जातको व्यवस्था :—: माताका भाडा बनाई सर्का-रलाई दस्तुर डिई बेचनु, सुतक १० दिन गर्नु, जुथो१० त्रैपक्षीक माथी कै सडर प्रोहीत गुबाल अचार गर्नु :॥

तदास जातको व्यवस्था :—: लासामा कोठी थापी बेपार गर्नु सुतक ६ डीन जुथो १० डीन बार्नु त्रैपछाक गर्नु प्रोहीत गुबाल गर्नु :॥

तती जातको व्यवस्था :—: कात्रो बुन्नु जनै बनाई बेचनु सुतक जुथो १० डीन बार्नू, त्रैपक्षीक गर्नू पुरोहित ब्राम्हण गर्नू :॥

तमोत जातको व्यवस्था :—: टामा कासा आडी गरेका धातुका भाडा वनाउनु सुना चाडीको जलप् सार्नु सुतक ६ डीन जुथो १२ डीन बार्नू त्रैपक्षीक कर्म माथी कै सडर उप्रेतका हकमा ब्राम्हण जोसी आचारहरूमा गर्नु यजमान बुद्ध मार्गी भय प्रोहीत गुबाल गर्नु :॥

सुलमी श्रेष्टको व्यवस्था :—: रानीका माईतीजनभए माई-तीले गर्ने काम त्यसले गर्नु बेपार गर्नु सुतक जुथो त्रैपक्षीकहरू माथी कै सडर :॥

कीसानीको व्यवस्था :—: देवदेवताका पुजासामाग्रीहरू बोकनू वली फालनू प्रोहीत गुबाल गर्नू खेत कमाउनू जुथो सुतक त्रैपछीक-हरू माथी कै सदर :॥

बैद्यको व्यवस्था :—: दुनियाको नडी हेरी व्यथातहटाई औषधी गरी व्यथानीबार नगर्नु असाध्य भई जाने थहरेकालाई बैत-रनी आडीदानहरू गराई तीर्थ पुऱ्याउनु औषड षुवाउदा अनुपाम पथ्य मुनासीब बिचार गरी प्रयोग गर्नू डस्तुर एकतकालीनु :॥

लोहकमीको व्यवस्था:— सास्त्रोक्त प्रमाण पूर्वक देवदेबता-हरूको मुर्तीहरू वनाउनु सुमेरू षोली ढुन्हु फोर्नु सुतक १० डीन जुथो

१२ डीन वार्नु त्रैपछिक कर्म गर्नू उप्रेट गुभाल गर्नू : ॥.

वराही जातको व्यवस्था :–: काटको फरमायसी काम गर्नू चरषाउयींटा धुप आाडी काठका मालहरू बनाई बेची षानू सूतक जुथोहरू माथी कै सडर प्रोहीत ब्राम्हण गर्नू बुद्ध मार्गी भए गुभाल गर्नू : ॥

हलवायींको व्यवस्था:–: रोती बनाउनु गुभाल संग मंत्र सुन्नू सुतक १० डीन जुथो १२ डीन वार्नु त्रैपक्षीक कर्म पनि गर्नु : ॥

बीषुवाडाको व्यवस्था :–: मूला अदुवाको षेती गरी बेचनू पन्च पटाका डीनू शीषा मुंण्डन गर्नू गुभाल संग मंत्र सुन्नु सुतक १० डीन जुथो १२ डीन बार्नु त्रैपछीक कर्म पनि गर्नु पुरोहीत गुबाल गर्नू : ॥

बाडाको व्यवस्था :–: सुन चाडीको गहना बनाउनु ढलवत धातुको भाडा वनाउनु धातुको बुता काट्नु सुन चाडीको जलपसार्नू कासाका कचउरा बनाउनु पुरोहीत गुभाल गर्नु सुतकाडी कार्यहरू माथी कै सडर : ॥

बज्राचार्यको व्यवस्था :–: यी गुभाल जातले श्रेष्ट ज्यापु हलवायी बरहि सीकर्मी लोहकर्मी चोत्रकारी सम्मका अघी देषीन आफुले मंत्र डीईआएका बुद्ध मार्गीलाई मंत्र डीनू सुतक ६ डीन जुथो ७ डीन वार्नू, प्रोहीत गुभाल गर्नू पैतालीश डीने कार्य पनि गर्नू : ॥

कसालको व्यवस्था :–: काशो कुतिपीटी भाडा बनाउनु सुतक १० डीन जुथो १२ डीन वार्नु पैतालिस डीने काय्र्य पनि गर्नू : ॥

पीथाचाय्र्यको व्यवस्था :–: पीठ पीठमा डेबताको पुजाहरू गर्नु आफुले अघो डेषीं गरीं आएका अधीकार पाएका महाबली आडी गरेका बली बीधानहरू गर्नू ब्राम्हणबाट मन्त्र सुन्नु जनै धारणा गर्नू बीधीकाहरूमा आफ्ना जातका शींष्ट पुरुषले गर्नू सुतक १० डीन जुथो १२ डीन वार्नु पैतालीस डीने काय्र्य पनि गर्नू बीबाह

गर्नमा। भ्रष्ट जात दुनीयाको घर पबीत्र गर्नू :॥

शिवाचार्यको व्यवस्था:–: सीबलीन्हुको पुजा गर्नू आफ्ना अधीकार भएका जात सम्ममा यजमानी गरीयज्ञाडी कर्म गर्नू फेरी गृह गृधी कर्म पनि गर्नू ब्राम्हणबाट मंन्त्र सुन्नु जनै धारना गर्नू आफ्ना जातका कर्महरू आफ्ना जातका शीष्टका हातबाट गर्नु सुत-कादी माथी कै सडर प्रोहीत ब्राम्हण गर्नू श्रेष्ट जातसंग बीवाहाडी व्यवहार चलाउनू : ॥

कर्माचार्यको व्यवस्था :–: श्रीतलेजुको तहल गरी चौकी बस्नु ब्राह्मणवाट मंन्त्र सुन्नु जनै धारना गर्नू बीधी आफुले नै गर्नू आफ्ना अधीकार भएका जात सम्ममा यजमानी गर्नू प्रोहीत ब्राह्मण गर्नू सुतकादीमाथी कै सडर :॥

गुबाचार्यको व्यवस्था :–: श्रेष्ठलाई डीक्ष्या सुनाउनू ब्राह्म-णवाट मंन्त्र सुन्नू आफ्ना अधीकार भएका जातमा यजमानी कार्य्य गर्नू सुत्र कार्यमा होम गर्नू प्रोहीत ब्राह्मण गर्नू सुतक जुथो माथी कै सडर : ॥

देबाचार्यको व्यवस्था :–: आफ्ना जातका शीष्टबाट मंत्र सुन्नु आफ्ना सुभ कार्यमा होम गर्नू यजमानी पनि गर्नू प्रोहीत सुत-कहरू माथी कै सडर : ॥

पात्रबंशथकुलवत्का व्यवस्था :–: ब्राह्मणवाट मंत्र सुन्नू ढालतरवार भीरनू राजसेवामा नीरंन्तर रहनू प्रोहीत सुतकहरू माथी कै सडर : ॥

राज लबतको व्यवस्था :–: ब्राह्मणवाट मंत्र सुन्नु ढाल तर-वार भीरनू राजासेवामा रहनू पुरोहीतहरू माथी कै सडर : ॥

कायस्थ जातको व्यवस्था :–: सर्कारको दस्कटर मोहर लेषनू गरी राज दुनीया सबैमा डान पत्र सुक्री बीक्री पत्र तमसुक भाषापत्र गरी व्यवहारीक लेखत जति लेखनू त्यो लेख लेखेको डस्तुर लीनु ब्राह्मण संग मंत्र सुन्नू प्रोहीत सुतकहरू माथी कै सडर : ॥

थारो श्रेष्टको व्यवस्था :–: शीव मार्गीले ब्राह्मणसंग मंत्र सुन्नू बुद्ध मार्गीले गुभाजु संग मंत्र सुन्नु बेपार कार्य गर्नू पुरोहीतका हकमा शीव मार्गीको ब्राह्मण बुद्ध मार्गीको गुर्भाल गर्नु अरू सुतकाडीहरू माथी कै सडर :।।

अमात्य माहाजुहरूको व्यवस्था :–: ब्राम्हणसंग मंत्र सुन्नु उतम श्रेष्टसंग बीवाह गर्नू राज्यकार्य गर्नू प्रोहीत सुतकहरू थारो श्रेष्ट कै सडर :।।

जोसीको व्यवस्था :–: ब्राह्मणसंग मंत्र सुन्नू जनै शीखा गायत्री धारणा गर्नू : संकल्प वाक्य पढीनीत्य कर्महरू गर्नू उतम श्रेष्टसंग बीवाह गर्नु जोतीष सास्त्र पढनू पात्रो बनाउनू ग्रहण ग्रहयोग स्नानदान प्रासस्त्य योग ग्रहको मेलक सुभा सुभ योग ईत्याडी ठीकठीक निर्नय गरी प्रजाहरूलाई कहनू जन्म पत्री चीना लेषनू साईत हेर्नू लेषनू यस डेषी उ पल्ला श्रेणिका ब्रह्मकर्महरू नगर्नू आफ्ना अधीकार सम्मको यजमानी कार्य गर्नू प्रोहीत सुतकहरू माथी कै सडर : ।।

थकुरीको व्यवस्था :–: ब्राह्मणसंग मंत्र सुन्नु जनै धारणा गर्नू सीव मार्ग बुद्ध मार्ग मान्नू ढालतरबार भीरनू राजकाज गर्नू अरू माथी कै सडर :।।

थाकुरको व्यवस्था :–: ब्राह्मणवाट दस कर्म गराउनू जनै धारणा गर्नू मंत्र स्वीकार गर्नू ढालतरवार भीरीसदा राजकाजमा रहनू वाणीज्य बेपार गर्नू प्रोहीत सुतकाडी माथी कै सदर : ।।

श्री ५ सर्कार राजाको व्यवस्था :–: ब्राम्हणबाट दस कर्म गरी गायत्री जनै धारणा गर्नू दीक्ष्या मंत्र स्वीकार गर्नू ढालतरवार भीरनू आफ्ना नोतीमा रहनू अरूलाई पनि चलाउनू प्रोहीत सुतकाडी माथी कै सदर :।।

देव ब्राम्हणको व्यवस्था :–: स्वजात बक्त मंत्र सुन्नू सुनाउनू राजालाई मंत्र डीनू श्रेष्टसम्मका जातमा यजमानी कार्य गर्नू बेद मंत्र स्मृती पुराणाडीबाट कृत्यमागनती भएका कार्यहरू गर्नू गरा-

उनू, नीषेध गरेका कार्यहरू नगर्नू नगराउनू राजगुरू घरेल पुराण नवाचनू राज गुरूले अरूलाई मंत्र नसुनाउनू प्रोहीत स्वजातीय ब्राम्हण गराउनु सुतक १२ डीन जुथो १२ डीन बार्नु पैतालीस डीनमा गर्नेमा सीक श्राद्ध समीडोकरण श्राध्दहरू पनि गर्नू :॥

ब्राम्हणजातका छोरा नभई ब्राह्मण परलोक भएमा तीनकी ब्राह्मणीले स्वधर्ममा रहुन जेल जो भएको चल अचल धनहरू षान बेहोर्न पाउछीन ति ब्राह्मणी छंन्जेल अपुताली भनी दाज्यू भाईले लीन पाउडीनन् कार्यहरू पनि अरूले गर्न हुदैन ती ब्राह्मणीको अधीकार छ :॥

यस्ता हीसावले यी राजा जयस्थीती राजमल्ल देवले स्थीती वन्दोवस्त बाधी सबै प्रजाहरूलाई वर्तनगराई आफु पनि त्यसै स्थीतीमा रहे यो स्थीतीपछि हुने राजा र प्रजाहरूमा जसले जसले नासगर्ला उसलाई पाप लाग्ला जसले थामी उन्त्तर उन्त्तर उन्नती गराउला उसलाई पुन्ये हुने छ भनि श्लोक समेत लेखी प्रचार गराए : ॥